# मिल्क टी

**मण्डलावाणी**

कुनैपनि कुराको विकासको आधार केलाई मानिन्छ होला ? यदि विकास पनि सापेक्ष हुन्छ भने नेपाली रंगमञ्चको स्वरुप हाम्रो कालमा आएर विकसित हुँदैछ भन्दा अत्युक्ति होला कि नहोला ?

लामो समयदेखि अभिनेत्रीको रुपमा काम गरीरहेकी मण्डला थिएटरकी सदस्य सृजना अधिकारीले नाटक निर्देशनको जमर्को गर्दैछिन् यसपाली । माथि राखिएका प्रश्नहरुको जवाफ यदि सकारात्मक आउँछ भने सृजनशीलताको नेतृत्व हस्तान्तरणमा मण्डलाभित्र रचिएको अर्को फड्को हो जस्तो लाग्छ मलाई –नाटक 'मिल्क टी' ।

आधुनिक नेपाली रंगकर्ममा मण्डलाले अत्यन्तै रुचाएको चीज हो –युवापुस्ताहरुको 'नेतृत्व र न्यारेटिभ्स' । यो सुन्दर प्रजातान्त्रिक अभ्यासले हामीलाई कालान्तरसम्म जीवित राख्नेमा हामी विश्वस्त छौं । नाटककी निर्देशक सृजनालाई शुभकामना र दर्शकहरुलाई हार्दिक निमन्त्रणा ।

–राजन खतिवडा

**नाटकको बारेमा**

आफ्नो इच्छा, आकांक्षा र हैकमले बाँचेका मानिसहरुको ठूलो जमात यो शहरमा छ । यीमध्ये कतिपयलाई 'राम्रा अनि सृजनशील' भनिन्छ भने कतिपयलाई 'सम्भ्रान्त र कूलीन' भनिन्छ । यस्तै जीवन बाँच्न चाहने महिलाहरुप्रति भने यो शहर क्रुर छ । उनीहरुलाई समाजले दिने विशेषणको विरोधमा रोइलो` गर्नु यस नाटकको ध्येय होइन, त्यही भएर त्यता नजाउँ, मूल प्रसंगतिर आउँ ।

शहरकी एक्ली महिलाले ऐना हेर्न छोडेकी छिन् । आफूलाई चिनाउन नसक्ने ऐना हेर्नुको साटो उनी आफ्ना शब्दहरु पढ्छिन । आफ्ना भावना र विचारहरुमा उनी आफ्नो अनुहार खोज्छिन् । उनको जीवन उनले रोजेको दुध चियाजस्तै छ, खल्लो तर पनि मीठो । जीवनमा जर्वजस्ती घोलिएको चिनी उनलाई मन पर्दैन ।

उसो त उनलाई चियापसल पनि उती मन पर्दैन । शहरका चियापसल र त्यहाँ हुने ताइँ न तुइँका टिप्पणीहरु ले बिगारेका थुप्रै जीवनहरुको उदाहरण उनी स्वयम् दिन्छिन् ।

जीवन बाँच्नुको आफ्नो महत्वाकांक्षा ती महिलामा जीवितै छ र अर्को उदेकलाग्दो कुरो पनि छ (नाटकको सस्पेन्स भएकोले म खोल्दिन)। यतिबेला म मैले नभेटेकी पारीजातलाई सम्झन्छु । तिनी भन्थिन् रे – '.....अन्त्यमा गएर पिल्सिनैपर्छ र यो पनि कुनै अनिवार्य छैन । एक्लो बाँच्न सकिन्छ, एक्लो ! '

मलाई किन किन 'सुयोगवीर'जस्तै लाग्यो नाटक 'मिल्क टी' ।

–सोमनाथ खनाल

**शुभकामना**

आठ कक्षामा पढ्ने एउटी सानी केटी डबलीमा आ'को हिजै जस्तो लाग्छ । तर यथार्थ अघि बढेको छ । उनले यसबीचमा थुप्रै नाटकहरु खेलीसकेकी छिन् । धेरै नाटकहरु हेरीसकेकी छिन् । नाटकका निकै किताबहरु पढीसकेकी छिन् । नाटकमा हुनुपर्ने कुराहरु बुझीसकेकी छिन् । उनै सानी केटी सृजना अहिले हामीमाऊ आफ्नो निर्देशकीय प्रस्तुा तस्वरुप 'मिल्क टी' लिएर आएकी छिन् । नेपाली रंगमञ्चको क्षितिजमा एउटा ईटा थपिएको छ । तिमीमा रंगकर्म जागीरहोस् । मेरो शुभकामना ।

–पुष्कर गुरुङ

डबली थिएटर

**निर्देशकीय**

सर्वप्रथम म धन्यवादबाट शुरु गर्न चाहन्छु । मेरा बाआमा, जसको कारणले म आज यो पृथ्वीमा छु । मण्डला थिएटर नेपाल, जसले मलाई बामे सर्ने हात दियो । मेरो बुढा, जसले हरेक दुःखसुखमा दियो र मलाई बलियो बनायो । विशेष धन्यवाद ती मानिसहरुलाई, जसले मलाई 'म' बन्न सहयोग गरे र त म आज 'मिल्क टी' बनाउन सफल भए । र, अन्त्यमा मेरा गुरुहरु पुष्कर सर र अनुप सरलाई सम्झिन चाहन्छु ।

नाटक निर्देशन गर्नु भनेको 'आफुलाई मन लागेको काम गर्नु हो' जस्तो मलाई लाग्छ । हामीहरु जहिले पनि वास्तविक जीवनमा गर्न नपाएको काम नाटकको माध्यमबाट गरीरहेका हुन्छौ । यसपटक पनि मलाई गर्न मन लागेको काम लिएर तपाईहरुलाई भेट्दैछु । म अनभिज्ञ छु –हाम्रो यो

भेटघाटको ‘इम्प्रेसन’ कस्तो रहने हो ? उसो त मलाई काम गर्दा गल्ती गर्न मनपर्छ ताकि त्यहि गल्तीलाई सच्याउँदै अर्को काम गर्न सकुँ । पहिलो निर्देशनका लागि यही नाटक छान्ने गल्ती पछाडि चाहिँ मेरो ‘हिरोइक’ चरित्र जिम्मेवार छ । मेरो यही चरित्रको बलतागतले नै नाटक तयार भएको छ । अब सबै तपाईहरुको हातमा छोडेको छु । हेरेर प्रतिक्रिया दिनु होला र अर्को कुरा मन नपरेमा भेटेर सल्लाह, सुझाव र प्रतिक्रिया दिनुहोला । यसले आउदा दिनमा हामीलाई काम गर्ने हौसला र प्रेरणा मिलिरहोस् । धन्यवाद ।

–सृजना अधिकारी

**मञ्चमा**

लुनिभा तुलाधर, सृजना अधिकारी, सुलक्षण भारती, प्रेमवर्षा, रेनुका कार्की, रियर राई, अनुप न्यौपाने र आशिष घिमिरे

**नेपथ्यमा**

मञ्च परिकल्पनाः सृजना अधिकारी

निर्माणः हुम बिसी, सागर बिसी, अनुप न्यौपाने

साजसज्जाः सृजना गहतराज र किशोर नेपाल

प्रकाश परिकल्पनाः सुलक्षण भारती

परिचालनः अंकित खड्का

प्राविधिक सहयोगीः आयान खड्का, मिलन कार्की, किरण श्रेष्ठ, अनुप न्यौपाने र रोहित पौडेल

ध्वनि परिचालनः रियर राई र अनुप न्यौपाने

पोष्टर फोटोः आभाष कर्माचार्य

पोष्टर डिजाइनः इँगिहोपो कोइँच सुनुवार

पेन्टिङ आर्टिस्टः जया शर्मा

बजार व्यवस्थापनः पुष्कर कार्की, अंकित खड्का, रियर राई, इँगिहोपो कोइँच सुनुवार

लेखकः सुलक्षण भारती

निर्देशन सहयोगीः आशिष घिमिरे

निर्देशकः सृजना अधिकारी

**हार्दिक आभारः**

मेलिन पराजुली, प्रतीक्षा कट्टेल, सुनील पोखरेल, निशा शर्मा, प्रकाश चाँदवारकर, प्रमोद कार्की, सरोज अर्याल, लोकेन्द्र लेखक, केनिपा सिंह,

उमेश तामाङ, रोशा बस्नेत, रुची श्रेष्ठ,
टेकराज पराजुली, नवीनबाबु गुरुङ्ग,
ल्याव ५ का विद्यार्थीहरु र नाटकमा

अटाएका - नअटाएका सम्पूर्ण
कलाकारहरु